# ✒ मूल्य अभिवृद्धि कर ऐन, २०५२

नेपाल राजपत्रमा प्रकाशन मिति

२०६७।१२।१९

**संशोधनः**

मूल्य अभिवृद्धि कर (पहिलो संशोधन) ऐन, २०५८ — २०५८।१०।४

आर्थिक ऐन, २०६७ — २०६७।११।३

२०५२ सालको ऐन नं. १४

**मूल्य अभिवृद्धि कर लगाउने र असुल उपर गर्ने व्यवस्था गर्न बनेको ऐन**

**प्रस्तावना** : देशको आर्थिक विकासको लागि आवश्यक राजश्व सङ्कलन गर्ने प्रक्रियालाई प्रभावकारी बनाई राजश्व परिचालन बढाउन वस्तु वा सेवाको बिक्री, वितरण, हस्तान्तरण, आयात वा निर्यात लगायतका सबै कारोबारमा मूल्य अभिवृद्धि कर लगाउने र असुल उपर गर्ने प्रक्रियालाई व्यवस्थित गरी राजश्व सङ्कलन प्रभावकारी ढङ्गबाट गर्न वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवको शासनकालको चौबीसौं वर्षमा संसदले यो ऐन बनाएकोछ ।

१. **संक्षिप्त नाम र प्रारम्भ** : (१) यस ऐनको नाम “मूल्य अभिवृद्धि कर ऐन, २०५२” रहेकोछ ।

(२) यो ऐन नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी तोकिदिएको मितिदेखि प्रारम्भ हुनेछ ।[१]

२. **परिभाषा** : विषय वा प्रसङ्गले अर्को अर्थ नलागेमा यस ऐनमा, -

(क) “कर” भन्नाले यस ऐनबमोजिम लाग्ने मूल्य अभिवृद्धि कर सम्झनु पर्छ ।

(ख) “कारोबार” भन्नाले कुनै वस्तु वा सेवा आपूर्ति गर्ने कार्य सम्झनु पर्छ ।

(ग) “कर लाग्ने कारोबार” भन्नाले दफा ५ को उपदफा (१) मा उल्लिखित कारोबार सम्झनु पर्छ ।

---

✒ आर्थिक ऐन, २०६७ अनुरूप मिलाइएको ।

१ यो ऐन मिति २०५४ साल मङ्सीर १ गतेदेखि प्रारम्भ हुने गरी तोकिएको (नेपाल राजपत्र: २०५४।५।२।

(घ) "कर लाग्ने मूल्य" भन्नाले कुनै वस्तु वा सेवाको सम्बन्धमा दफा १२ बमोजिम कायम गरिने मूल्य सम्झनु पर्छ ।

(ङ) "वस्तु" भन्नाले चल वा अचल दुबै किसिमको सम्पत्ति सम्झनु पर्छ ।

(च) "सेवा" भन्नाले वस्तु बाहेकको जुनसुकै कुरा सम्झनु पर्छ ।

[२](च१) "कम्पनी वा निकायको समूह" भन्नाले देहायको अवस्था विद्यमान भएको कम्पनी वा निकायको समूह मानिनेछ :-

(क) निकायको समूहमा सम्वद्ध व्यक्ति वा प्रतिनिधि सदस्यद्वारा कुनै व्यवसाय सञ्चालन गरेमा,

(ख) कुनै वस्तु वा सेवाको आपूर्ति निकायको समूहद्वारा आफ्नो सम्वद्ध कुनै निकाय वा अर्को निकायको समूहलाई आपूर्ति गरेमा,

(ग) निकायको समूह वा समूहको सदस्यलाई कुनै वस्तु वा सेवाको आपूर्ति गरेमा,

(घ) कुनै दुई वा दुईभन्दा वढी निकायहरूको व्यापार सञ्चालनको स्थायी ठेगाना एकै ठाउँमा भएमा, वा

(ङ) कुनै एक व्यक्ति वा केही व्यक्तिको प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा निकायको समूहमा नियन्त्रण भएमा ।"

(छ) "आपूर्ति" भन्नाले प्रतिफल लिई कुनै वस्तु वा सेवा बिक्री, विनिमय, हस्तान्तरण गर्ने कार्य वा तत्सम्बन्धी अनुमति दिने वा ठेक्का पट्टा गर्ने कार्य सम्झनु पर्छ ।

[३](ज) "प्रतिफल" भन्नाले वस्तु वा सेवाको आपूर्ति गर्दा सोको मूल्य वापत प्राप्त हुने कुनै पनि कुरा सम्झनु पर्छ ।

[४](ज१) "ऋण सम्झौता" भन्नाले हायर पर्चेज सम्झौता वा वित्तीय पट्टा सम्झनु पर्छ ।

(झ) "आयात" भन्नाले प्रचलित कानूनबमोजिम वस्तु वा सेवा नेपालभित्र पैठारी गर्ने कार्य सम्झनु पर्छ ।

(ञ) "निर्यात" भन्नाले प्रचलित कानूनबमोजिम वस्तु वा सेवा नेपालबाहिर निकासी

---

२ आर्थिक ऐन, २०६७ द्वारा थप ।

३ आर्थिक ऐन, २०६७ द्वारा संशोधित ।

४ आर्थिक ऐन, २०६७ द्वारा थप ।

गर्ने कार्य सम्झनु पर्छ ।

(ट) "बजार मूल्य" भन्नाले दफा १३ बमोजिम निर्धारित मूल्य सम्झनु पर्छ ।

[५](ट१) "विद्युतीय माध्यम" भन्नाले कम्प्यूटर, इन्टरनेट, इ-मेल, फ्याक्स, विद्युतीय क्यास मेशिन (इलेक्ट्रोनिक क्यास रजिष्टर), फिस्कल प्रिन्टर समेतका स्वीकृत माध्यम जनाउँछ ।

(ठ) "व्यक्ति" भन्नाले कुनै व्यक्ति, फर्म, कम्पनी, सङ्घ, संस्था, साझेदारी संस्था, सहकारी, संयुक्त व्यवसाय, गुठी वा कोष सम्झनु पर्छ र सो शब्दले नाफाको उद्देश्य लिई वा नलिई कर लाग्ने कारोबारमा संलग्न रहेको सरकारी निकाय, धार्मिक सङ्गठन, परोपकारी संस्था वा त्यस्तै अन्य निकायहरू र तिनका शाखा वा उपशाखाहरूलाई समेत जनाउँछ ।

(ड) "दर्ता भएको व्यक्ति" भन्नाले दफा १० बमोजिम कारोबार गर्न दर्ता भएको व्यक्ति सम्झनु पर्छ ।

(ढ) "दर्ता नम्बर" भन्नाले दर्ता भएको व्यक्तिलाई दफा १० बमोजिम प्रदान गरिएको नम्बर सम्झनु पर्छ ।

(ण) "आपूर्तिकर्ता" भन्नाले कुनै वस्तु वा सेवा आपूर्ति गर्ने व्यक्ति सम्झनु पर्छ ।

(त) "प्रापक" भन्नाले कुनै वस्तु वा सेवा ग्रहण गर्ने व्यक्ति सम्झनु पर्छ ।

(थ) "करदाता" भन्नाले कर लाग्ने कारोबारमा संलग्न व्यक्ति सम्झनु पर्छ ।

[६](थ१) "कर अवधि" भन्नाले करदाताले दफा १८ बमोजिम कर विवरण पेश गर्नु पर्ने अवधि सम्झनु पर्छ ।

(द) "विभाग" भन्नाले कर प्रशासनको निमित्त उत्तरदायी हुने गरी नेपाल सरकार ले तोकेको अर्थ मन्त्रालय अन्तर्गतको कुनै विभाग सम्झनु पर्छ ।

(ध) "महानिर्देशक" भन्नाले विभागको महानिर्देशक सम्झनु पर्छ ।

[७](न) "कर अधिकृत" भन्नाले यस ऐनको प्रयोजनको लागि नेपाल सरकारले नियुक्त गरेको कर अधिकृत, प्रमुख कर अधिकृत र प्रमुख कर प्रशासक सम्झनु पर्छ र

---

५ आर्थिक ऐन, २०६७ द्वारा थप ।

६ पहिलो संशोधनद्वारा थप ।

७ आर्थिक ऐन, २०६७ द्वारा संशोधित ।

सो शब्दले विभागका शाखा अधिकृत, निर्देशक र उप-महानिर्देशक वा यस ऐन बमोजिम कर अधिकृतको अधिकार प्रयोग गर्न पाउने गरी नेपाल सरकारले तोकेको अन्य कुनै अधिकृतलाई समेत जनाउँछ ।

(प) "तोकिएको" वा "तोकिएबमोजिम" भन्नाले यस ऐन अन्तर्गत बनेको नियममा तोकिएको वा तोकिएबमोजिम सम्झनु पर्छ ।

३. **कर अधिकृत नियुक्त गर्न वा तोक्न सक्ने** : यस ऐनको प्रयोजनको निमित्त नेपाल सरकार ले आवश्यक सङ्ख्यामा कर अधिकृतहरू नियुक्त गर्न सक्नेछ र नेपाल सरकार ले आवश्यक देखेमा नेपाल सरकार को अन्य कुनै अधिकृतलाई पनि कर अधिकृतको कार्य गर्ने गरी तोक्न सक्नेछ ।

[८]४. **कर अधिकृतको अधिकार क्षेत्र**: (१) कर अधिकृतको अधिकार क्षेत्र नेपाल सरकारले तोकेबमोजिम हुनेछ ।

(२) कर अधिकृतलाई आफ्नो कार्यक्षेत्र बाहेकका अन्य क्षेत्रका करदाताको कारोबार समेत निरीक्षण र अनुगमन गर्ने गरी महानिर्देशकले तोक्न सक्नेछ ।"

५. **मूल्य अभिवृद्धि कर लाग्ने** : (१) यस ऐनमा अन्यथा व्यवस्था भएकोमा बाहेक देहायका कारोबारमा मूल्य अभिवृद्धि कर लाग्नेछ :-

(क) नेपालभित्र आपूर्ति भएका वस्तु वा सेवामा,

(ख) नेपालभित्र आयात गरिएको वस्तु वा सेवामा,

(ग) नेपालबाहिर निर्यात गरिएको वस्तु वा सेवामा,

(२) प्रत्येक कारोबारको कर लाग्ने मूल्यमा कर लाग्नेछ ।

(३) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि अनुसूची-१ मा उल्लिखित वस्तु वा सेवाहरूको कारोबारमा कर लाग्ने छैन । साथै त्यस्तो वस्तु वा सेवाको खरिदमा पहिले लागेको कर दफा १७ बमोजिम कट्टी गर्न र दफा २४ बमोजिम फिर्ता लिन पाइने छैन ।

[९]५क. **कारोबारको स्वामित्वको हस्तान्तरणमा कर नलाग्ने**: (१) यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि दर्ता भएको व्यक्तिले आफूले गर्दै आएको कारोबार अन्य कुनै

---

८ आर्थिक ऐन, २०६७ द्वारा संशोधित ।

९ आर्थिक ऐन, २०६७ द्वारा संशोधित ।

दर्ता भएको व्यक्तिलाई बिक्री गरेमा वा निजको मृत्यु भई हकवालाको नाममा कारोबार हस्तान्तरण भएमा त्यसरी हुने स्वामित्वको हस्तान्तरणमा कर लाग्ने छैन । त्यसरी कारोबार बिक्री गर्दा वा हस्तान्तरण गर्दा दर्ता भएको व्यक्तिले सो कुराको जानकारी तोकिएबमोजिम विभागलाई दिनु पर्नेछ ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि कानूनबमोजिम दर्ता हुनु पर्ने वा भएको कुनै उद्योग वा व्यवसायको हस्तान्तरण भएमा स्वामित्व प्राप्त गर्नेले हस्तान्तरण गर्नेको कानूनद्वारा निर्दिष्ट करको दायित्व व्यहोर्नु पर्नेछ ।

(३) उपदफा (२) को अधीनमा रही स्वामित्व प्राप्त गर्नेले यस ऐनबमोजिम तोकिएको अवधिसम्म (हस्तान्तरण हुन अघि र पछिसम्मको) त्यस्तो उद्योग वा व्यवसायको कारोबारको लेखा, खातावही तथा हिसाव किताब सुरक्षित राख्नु पर्ने दायित्व वहन गर्नु पर्नेछ ।

[१०]**५ख.** **दर्ता गर्न आदेश दिन सक्ने** : दर्ता हुनु पर्ने व्यक्तिले दर्ता नगरी कुनै कारोबार गरिरहेको छ भन्ने कुरा कर अधिकृतलाई मनासिब लागेमा त्यस्तो व्यक्तिलाई दर्ता गर्न आदेश दिन सक्नेछ ।

तर दफा ९ बमोजिम तोकिएको रकमसम्मको मात्र कारोबार गरेको हुँदा दर्ता हुनु नपर्ने भन्ने जिकिर लिने व्यक्तिले सो कुराको प्रमाण पुऱ्याउनु पर्नेछ ।

६. **आपूर्तिको स्थान र समय** : (१) यस ऐनबमोजिम कर निर्धारण र असुल उपर गर्ने प्रयोजनको लागि कुनै वस्तु वा सेवाको आपूर्ति नेपालभित्र वा बाहिर भएको कुराको निर्धारण तोकिएबमोजिम हुनेछ ।

(२) यस ऐनबमोजिम कर निर्धारण र असुल उपर गर्ने प्रयोजनको लागि कुनै वस्तु वा सेवाको आपूर्ति देहायको समयमध्येमा जुन पहिले हुन्छ सोही समयमा त्यस्तो वस्तु वा सेवाको आपूर्ति भएको मानिनेछ :-

(क) आपूर्तिकर्ताले बिजक जारी गरेको बखत,

(ख) वस्तुको आपूर्तिको हकमा प्रापकले आपूर्तिकर्ताको कारोबार स्थलबाट वस्तु उठाएको वा ग्रहण गरेको बखत,

(ग) सेवाको आपूर्तिको हकमा सेवा प्रदान भएको बखत,

(घ) आपूर्तिकर्ताले वस्तु वा सेवाको प्रतिफल प्राप्त गरेको बखत ।

---

[१०] पहिलो संशोधनद्वारा थप ।

(३) उपदफा (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि देहायका अवस्थाहरूमा देहायबमोजिमको समयलाई आपूर्ति समय मानिनेछ :-

(क) निरन्तर रूपमा आपूर्ति हुने दूर सञ्चार सेवा वा त्यस्तै अन्य सार्वजनिक सेवाहरूको हकमा बिजक जारी गर्दाको समय,

(ख) करारबमोजिम किस्ताबन्दी रूपमा कुनै वस्तु वा सेवाको मूल्य एकभन्दा बढी दिनमा आंशिक रूपमा भुक्तानी हुने व्यवस्था भएकोमा भुक्तानी भएको वा करारमा भुक्तानी गर्नु पर्ने भनेर उल्लेख गरिएको दिनमध्ये जुन पहिले हुन्छ सो समय,

(ग) यस ऐन अन्तर्गत कर कट्टी सुविधा प्राप्त नहुने गरी प्रयोग भएका वस्तु वा सेवाको हकमा त्यस्तो वस्तु वा सेवा प्रयोग भएको समय ।

[११] **स्पष्टीकरण:** यस खण्डको प्रयोजनको लागि देहायका अवस्थामा प्राप्त गरेको मानिनेछ :-

(क) कपिराइट्स, पेटेन्ट, लाइसेन्स, ट्रेडमार्क र यस्तै समान प्रकृतिका अधिकारहरू,

(ख) विज्ञापन सेवा,

(ग) प्राविधिक सेवा, इन्जिनियरिङ सेवा, प्राविधिक सेवा प्रदान गर्ने आपूर्तिकर्ताको सेवा, कानूनी सेवा, लेखासम्बन्धी सेवा, तथ्यांक तथा तथ्यांक प्रशोधन सेवा, सूचनाको सेवा र यस्तै समान प्रकृतिको सेवा,

(घ) उपदफा (१) को सेवा प्रदान गर्दा वा कुनै दायित्व वा अनुवन्धन स्वीकार गर्दा वा सो अनुवन्धनको आंशिक वा पूर्ण अंशको अभ्यास गर्दा वा त्यस्तो अधिकारको प्रयोग गरी कुनै व्यावसायिक क्रियाकलाप गर्दा, वा

(ङ) सेफ डिपोजिटको सुविधाको कार्य बाहेक बीमा वा पुनर्बीमाको सेवा ।

---

११ आर्थिक ऐन, २०६७ द्वारा थप ।

(४) कुनै कारोबारको आपूर्ति समयको सम्बन्धमा उपदफा (२) मा उल्लिखित अवस्थाहरूमध्ये एकैपटक एकभन्दा बढी अवस्थाहरू लागू हुन सक्ने भएमा त्यस्तो कारोबारमा आपूर्तिको समयको निर्धारण महानिर्देशकले वस्तुगत आधारमा तोकेबमोजिम हुनेछ।

७. **करको दर** : [१२](१) यस ऐनबमोजिम लाग्ने करको दर तेह्र प्रतिशतको एकल दर हुनेछ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भएतापनि अनुसूची-२ मा उल्लिखित वस्तु वा सेवाको कारोबारमा शून्य दरमा कर लाग्नेछ।

८. **करको निर्धारण र असुल उपर** : (१) दर्ता भएको व्यक्तिले यो ऐन र यस ऐन अन्तर्गत बनेको नियमबमोजिम कर लाग्ने मूल्यमा कर निर्धारण र असुल उपर गर्नु पर्नेछ।

[१३](२) नेपाल वाहिरको दर्ता नभएको कुनै व्यक्तिबाट सेवा प्राप्त गर्ने दर्ता भएको वा दर्ता नभएको व्यक्तिले यो ऐन र यो ऐन अर्न्तगत बनेको नियम बमोजिम कर लाग्ने मूल्यमा भुक्तानीका वखत कर निर्धारण र असुल उपर गर्नु पर्नेछ।

[१४](३) व्यावसायिक प्रयोजनको लागि निर्माण गरिने पचास लाख रुपैयाँ भन्दा बढीको भवन वा अपार्टमेन्ट वा सपिङ कम्प्लेक्स र विभागले तोकेका यस्तै प्रकारका अन्य संरचना दर्ता नभएको व्यक्तिबाट निर्माण गराएको भए तापनि त्यस्तो निमार्ण दर्ता भएको व्यक्तिबाट गराए सरहमानी सो संरचनाको स्वामित्व रहेका व्यक्तिबाट कर निर्धारण गरी असुल उपर गरिनेछ।

[१५]८क. **बैंक प्रत्याभूतिको व्यवस्था**: (१) उद्योग सञ्चालन भएको अन्तिम विगत बाह्र महिनाको कुल बिक्रीको साठी प्रतिशत भन्दा बढी निकासी गर्ने उद्योगले निकासी गर्ने परिमाण जतिको मालवस्तु उत्पादन गर्न आवश्यक कच्चा पदार्थ पैठारी गर्दा तथा वण्डेड वेयर हाउस मार्फत कर मुक्त पसलको लागि पैठारी गर्ने मालसामानमा लाग्ने कर वापत सम्बन्धित भन्सार कार्यालयमा बैंक प्रत्याभूति राखी पैठारी गर्न सकिनेछ।

तर वण्डेड वेयर हाउस मार्फत कर मुक्त पसलले पैठारी गर्ने बाहेक अन्य निकासीकर्ताले यस्तो सुविधा प्राप्त गर्न कच्चा पदार्थबाट तयारी सामान बनाई निकासी गर्दा दश प्रतिशत मूल्य अभिवृद्धि भएको हुनु पर्नेछ।

---

१२ आर्थिक ऐन, २०६७ द्वारा संशोधित।

१३ आर्थिक ऐन, २०६७ द्वारा संशोधित।

१४ आर्थिक ऐन, २०६७ द्वारा थप।

१५ आर्थिक ऐन, २०६७ द्वारा थप।

(२) उपदफा (१) बमोजिमको सुविधा लिई वण्डेड वेयर हाउस मार्फत पैठारी भएका मदिरा तथा चुरोट नेपाल सरकार, परराष्ट्र मन्त्रालयले सिफारिस गरेको कूटनैतिक तथा महसुल सुविधा प्राप्त व्यक्ति वा निकायलाई मात्र बिक्री गर्नु पर्नेछ।

(३) यो दफा प्रारम्भ हुँदाका वखत त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थल स्थित करमुक्त पसलमा मौज्दातमा रहेका मदिरा तथा चुरोट स्वीकृति प्राप्त आफ्नै वण्डेड वेयर हाउसमा स्थानान्तरण गर्न वा लाग्ने कर तिरी बिक्री गर्न सकिनेछ।

(४) उपदफा (१) बमोजिम राखिएको बैंक प्रत्याभूति विभागले तोकेको प्रक्रिया बमोजिम सम्बन्धित भन्सार कार्यालयबाट फुकुवा गरिनेछ।

(५) यस दफा बमोजिमको सुविधा प्राप्त गर्ने व्यक्तिले दफा २४ को उपदफा (४) बमोजिमको सुविधा पाउने छैन।

[१६]**९. सानो कारोबार गर्ने व्यवसायीलाई छुट** : यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि तोकिएको रकमसम्मको वार्षिक कर लाग्ने कारोबार गर्ने साना व्यवसायीलाई दर्ता गर्नु नपर्ने र विवरण पेश गर्नु नपर्ने तथा अन्य प्रक्रियाहरू पूरा गर्नु नपर्ने गरी तोकिएबमोजिम छुट दिन सकिनेछ।

तर सानो कारोबार गर्ने व्यवसायीले स्वेच्छाले आफ्नो कारोबार दर्ता गर्न चाहेमा दफा १० बमोजिमको प्रक्रिया पुरा गरी दर्ता गराउन सक्नेछ।

**१०. दर्ता** : [१७](१) कुनै कारोबारमा संलग्न हुन चाहने व्यक्तिले कारोबार शुरु हुनु भन्दा अघि कारोबार दर्ताको लागि तोकिएको ढाँचामा कर अधिकृत समक्ष दरखास्त दिनु पर्नेछ।

[१८](२) कुनै व्यक्तिले कारोबार गरेको वस्तुमा कर लाग्ने भएमा वा कुनै व्यक्तिले महानगरपालिका,उपमहानगरपालिका, नगरपालिका वा विभागले तोकेको क्षेत्रभित्र हार्डवेयर, सेनिटरी, फर्निचर, फिक्स्चर, फर्निसिँग, अटोमोवाइल्स, मोटर पार्टस, इलेक्ट्रोनिक्स, मार्वल, शैक्षिक परामर्श, डिस्को थेक, हेल्थ क्लब, क्याटरिङ सेवा, पार्टी प्यालेस व्यवसाय, पार्किङ सेवा, मेशिनरी उपकरण प्रयोग भएको ड्राईक्लिनर्स, बार सहितको रेष्टुरेण्ट र कलरल्यावको कारोवार सञ्चालन गरेमा त्यसरी कर लागेको वा

---

१६ आर्थिक ऐन, २०६७ द्वारा संशोधित।
१७ आर्थिक ऐन, २०६७ द्वारा संशोधित।
१८ आर्थिक ऐन, २०६७ द्वारा संशोधित।

कारोबार सञ्चालन गरेको मितिले तीस दिनभित्र त्यस्तो कारोबार दर्ताको लागि तोकिएको ढाँचामा कर अधिकृत समक्ष दरखास्त दिनु पर्ने छ।"

(३) उपदफा (१) र (२) मा जुनसुकै कुरा लेखिएको भएतापनि अनुसूची-१ मा उल्लिखित कर छुट हुने वस्तु वा सेवाको मात्र कारोबार गर्ने व्यक्तिले दर्ता गराउनु पर्ने छैन ।

(४) उपदफा (१) वा (२) बमोजिम रीतपूर्वकको [१९]दरखास्त दिने प्रत्येक व्यक्तिलाई कर अधिकृतले दर्ता गरी तोकिएको ढाँचामा तोकिएको म्यादभित्र दर्ता नम्बर सहितको दर्ताको प्रमाणपत्र दिनु पर्नेछ।

(५) दर्ता भएको व्यक्तिले दर्ताको प्रमाणपत्र आफ्नो कारोबार सञ्चालन गर्ने प्रमुख स्थानमा सबैले देख्ने गरी राख्नु पर्नेछ र कारोबारको स्थान एकभन्दा बढी भएमा प्रमुख स्थान बाहेक अन्य स्थानमा समेत कर अधिकृतद्वारा प्रमाणित गरेको दर्ताको प्रमाणपत्र सबैले देखिने गरी राख्नु पर्नेछ।

(६) दर्ता भएको व्यक्तिले आफ्नो दर्ता नम्बरको प्रयोग मूल्य अभिवृद्धि कर, अन्तःशुल्क र भन्सारसम्बन्धी सबै कारोबार र तोकिएबमोजिमका अन्य कारोबारको सम्बन्धमा समेत गर्नु पर्नेछ।

(७) उपदफा (१) वा (२) बमोजिम दर्ताको लागि दिएको दरखास्तमा उल्लिखित विवरणमा कुनै परिवर्तन भएमा त्यस्तो परिवर्तन भएको पन्ध्र दिनभित्र दर्ता भएको व्यक्तिले कर अधिकृतलाई सो कुराको जानकारी दिनु पर्नेछ।

[२०]**१०क.अस्थायी दर्ता सम्बन्धी विशेष व्यवस्थाः** (१) अस्थायी रूपमा आयोजना गर्ने प्रदर्शनी, मेला तथा अन्य यस्तै कारोबारको हकमा कारोबार शुरु हुनु भन्दा अगावै आयोजक तथा सो आयोजनामा कर लाग्ने वस्तु वा सेवाको कारोबार गर्ने मूल्य अभिवृद्धि करमा दर्ता नभएका व्यवसायी मूल्य अभिवृद्धि करमा अस्थायीरूपमा दर्ता हुनु पर्नेछ । यसरी दर्ता हुनेको हकमा कर अधिकृतले सुरक्षण वापत धरौटी माग्न सक्नेछ।

(२) उपदफा (१) बमोजिम साविकदेखि मूल्य अभिवृद्धि करमा दर्ता भएको व्यवसायीले सो कार्यक्रममा राख्ने वस्तु स्टक ट्रान्सफर गरी लैजान पाउनेछ।

---

१९ आर्थिक ऐन, २०६७ द्वारा संशोधित ।

२० आर्थिक ऐन, २०६७ द्वारा थप ।

(३) उपदफा (१) बमोजिमको कार्यक्रमको लागि मात्र दर्ता भएको करदाताले आयोजना गरेको प्रदर्शनी, मेला समाप्त भएको सात दिनभित्र कारोबारको विवरण पेश गरी लाग्ने सम्पूर्ण कर समेत दाखिला गरी अस्थायी दर्ता खारेज गर्नु पर्नेछ ।"

**११.** **दर्ता खारेजी** : (१) कर अधिकृतले देहायका कुनै अवस्थामा दर्ता भएको व्यक्तिको दर्ता खारेज गर्न सक्नेछ :-

(क) सङ्गठित संस्था भए त्यस्तो सङ्गठित संस्था बन्द, बिक्री वा हस्तान्तरण भएमा वा अन्य कुनै किसिमबाट त्यस्तो सङ्गठित संस्थाको अस्तित्व कायम नरहेमा,

(ख) व्यक्तिगत स्वामित्व भए त्यस्तो स्वामित्व भएको व्यक्तिको मृत्यु भएमा,

[२१](ग) साझेदार संस्था भए त्यस्तो साझेदारी संस्था विघटन भएमा वा साझेदारको मृत्यु भएमा,

(घ) दर्ता भएको व्यक्तिले करलाग्ने कारोबार गर्न छाडेमा,

[२२](घ१) लगातार एक वर्षसम्म सून्य विवरण दिने वा विवरण नै नदिई बसेका करदाता भएमा,"

(ङ) भूलवश दर्ता भएकोमा ।

[२३](१क.) उपदफा (१) मा उल्लिखित अवस्था बाहेक अन्य अवस्थामा स्वेच्छाले आफ्नो कारोबार दर्ता गराएका सानो कारोबार गर्ने व्यवसायीले कारोबार दर्ता गराएको मितिले एक वर्ष पूरा नभएसम्म स्वेच्छाले आफ्नो कारोबारको दर्ता खारेजी गर्न सक्ने छैन । कारोबार दर्ता गराएको एक वर्ष पूरा भएपछि त्यस्ता कारोबारको दर्ता खारेजी गर्न चाहने सानो कारोबार गर्ने व्यवसायीले सम्बन्धित कर अधिकृत समक्ष दर्ता खारेजीको लागि तोकिएबमोजिम निवेदन दिन सक्नेछ । यसरी निवेदन परेमा सम्बन्धित कर अधिकृतले त्यस्तो कारोबारको दर्ता खारेज गरिदिनु पर्नेछ ।

[२४](१ख) दर्ता खारेजीको लागि कर विवरण पेश भएको पन्ध्र दिनभित्र करदाताले

---

२१ आर्थिक ऐन, २०६७ द्वारा संशोधित ।

२२ आर्थिक ऐन, २०६७ द्वारा थप ।

२३ पहिलो संशोधनद्वारा थप ।

२४ आर्थिक ऐन, २०६७ द्वारा थप ।

लेखा परीक्षणको लागि आफ्नो कागजातहरू पेश गर्नु पर्नेछ र कर अधिकृतले त्यस्ता करदाताको लेखा परीक्षण गरी तीन महिनाभित्र दर्ता खारेजी गरी वा दर्ता खारेज नहुने भए सोको जानकारी करदातालाई दिनु पर्नेछ । सो अवधिभित्र कर अधिकृतले दर्ता खारेज नगरेमा वा दर्ता खारेज हुने भनी निर्णय नगरेमा सो अवधि पछिको कर विवरण करदाताले पेश गर्नु पर्ने छैन ।

(२) दर्ता खारेजीसम्बन्धी प्रक्रिया तोकिएबमोजिम हुनेछ ।

[२५](३) पहिले करकट्टी सुविधा लिई सकेका वस्तुहरूमध्ये दर्ता खारेज हुँदाका बखत बाँकी रहेको मौज्दात (पूँजीगत सामान समेत) लाई बजार मूल्यमा आपूर्ति गरेको मानिनेछ र सो बमोजिम कर निर्धारण गरी असुल गरिनेछ ।

**स्पष्टीकरणः** यस उपदफाको प्रयोजनको लागि "पूँजीगत सामान" भन्नाले कुनै सम्पत्ति वा सम्पत्तिको कुनै भाग र कर लाग्ने कारोबारमा प्रयोग हुने सम्पत्तिलाई जनाउँछ ।

[२६](४) कर लाग्ने कारोबार हुँदा कुनै कुरा गरेको वा नगरेको कारणले यस ऐन बमोजिम गर्नु पर्ने कार्य तथा दायित्व बाँकी भएमा सो करदाताको दर्ता खारेज हुँदैमा त्यस्तो दायित्वको असरबाट त्यस्तो करदाताले उन्मुक्ति पाउने छैन ।

१२. **कर लाग्ने मूल्य** : (१) यस ऐनमा अन्यथा व्यवस्था भएकोमा बाहेक नगद मात्र प्रतिफल भएको अवस्थामा आपूर्तिकर्ताले प्रापकसँग लिएको मूल्य मात्र कर लाग्ने मूल्य हुनेछ ।

(२) कर लाग्ने मूल्यमा देहायका रकमहरू समावेश हुनेछन् :-

(क) कारोबारको सिलसिलामा आपूर्तिकर्ताले व्यहोरेको ढुवानी र वितरणसम्बन्धी खर्चहरू र नाफाको रकम,

[२७](ख) यस ऐन बमोजिमको कर बाहेक अन्तःशुल्क, स्वामित्व शुल्क र अन्य कर रकम ।"

**स्पष्टीकरणः** यस खण्डको प्रयोजनको लागि "अन्य कर रकम" भन्नाले साल-वसाली आर्थिक ऐनले तोकेबमोजिम लाग्ने महसुल, दस्तुर, र शुल्क सम्झनु पर्छ ।

---

२५ आर्थिक ऐन, २०६७ द्वारा संशोधित ।

२६ आर्थिक ऐन, २०६७ द्वारा थप ।

२७ आर्थिक ऐन, २०६७ द्वारा संशोधित ।

(३) वस्तु वा सेवा आपूर्ति गर्दा मूल्यमा दिईएको डिस्काउण्ट, कमिसन वा यस्तै अन्य व्यापारिक छुटको रकमलाई कर लाग्ने मूल्यमा समावेश गरिने छैन ।

(४) वस्तु विनिमय अन्तर्गत आदान प्रदान गरिएका वस्तु वा सेवाको कर लाग्ने मूल्य त्यसरी आदान प्रदान गरिएका वस्तु वा सेवाको बजार मूल्य बराबर हुनेछ।

(५) यस ऐनमा अन्यथा व्यवस्था भएकोमा बाहेक आयात गरेको वस्तुको कर लाग्ने मूल्य कायम गर्दा मूल्य अभिवृद्धि कर बाहेक ढुवानी, बिमा, एजेण्ट र अन्य व्यक्तिहरूको कमिसन आदि समेतको पैठारी मूल्य, पैठारी महसुल, समीकारक महसुल र पैठारीमा लाग्ने अन्य कुनै कर भए सो समेत जोडी कर लाग्ने मूल्य कायम गरिनेछ।

(६) कुनै वस्तु वा सेवाको मूल्य प्रचलित बजार मूल्यभन्दा ज्यादै कम देखिएमा त्यस्तो वस्तु वा सेवाको कर लाग्ने मूल्य बजार मूल्य बराबर हुनेछ।

(७) आंशिक प्रतिफल लिई आपूर्ति गरेको वस्तु वा सेवाको कर लाग्ने मूल्य बजार मूल्य बराबर हुनेछ ।

(८) कुनै वस्तु वा सेवा बापत राखिएको धरौटी रकम आपूर्तिकर्ताले त्यस्तो वस्तु वा सेवाको प्रतिफलको रूपमा तोकिएबमोजिम मिलान नगरेसम्म कर लाग्ने मूल्य मानिने छैन ।

[२८]**१२क.** **काठको कारोबारमा कर लाग्ने मूल्य**: (१) राष्ट्रिय वनको काठ लिलामी, छोडपूर्जी वा चिरान आदेश पाएको समयमध्ये जुन पहिले हुन्छ सो समयमा त्यस्तो काठको रोयल्टी रकम वा लिलाम रकममा जुन बढी हुन्छ सो रकममा कर लगाई असुल उपर गरिनेछ।

(२) निजी आवादी, निजी वन वा सामुदायिक वनको काठ व्यापारिक प्रयोजनको लागि बिक्री गरेमा रोयल्टी नलाग्ने भए पनि उपदफा (१) मा व्यवस्था भए बमोजिम राष्ट्रिय वनको काठ सरह नै कर लाग्नेछ।"

**१३.** **बजार मूल्य**: [२९](१) कुनै दिनमा आपूर्ति गरिएको वस्तु वा सेवाको बजार मूल्यको निर्धारण असम्बन्धित व्यक्तिहरूकाबीच स्वतन्त्र रूपले आपूर्ति भएको त्यस्तै किसिमको वस्तु वा सेवा बापत प्राप्त हुने प्रतिफललाई ध्यानमा राखी निर्धारण गरिनेछ।

(२) यस दफाको प्रयोजनको लागि बजार मूल्य निर्धारण गर्ने प्रक्रिया तोकिएबमोजिम हुनेछ।

---

२८ आर्थिक ऐन, २०६७ द्वारा थप ।

२९ पहिलो संशोधनद्वारा संशोधित

(३) उपदफा (१) र (२) बमोजिम कुनै वस्तु वा सेवाको बजार मूल्य निर्धारण गर्न नसकिएको अवस्थामा महानिर्देशकले तोकेको प्रक्रिया अनुसार त्यस्तो वस्तु तथा सेवाको बजार मूल्य निर्धारण गरिनेछ ।

**१४. <u>बिजक दिनु पर्ने</u>** : (१) प्रत्येक दर्ता भएको व्यक्तिले तोकिएबमोजिमको अवस्थामा बाहेक कुनै वस्तु वा सेवा आपूर्ति गर्दा प्रापकलाई बिजक दिनु पर्नेछ ।

[३०]तर दश लाख रुपैयाँ भन्दा बढीको वार्षिक कारोबार गर्ने व्यक्तिले दर्ता नभएको भएपनि आफ्नो नाम, ठेगाना तथा स्थायी लेखा नम्बर उल्लेख गरी सिलसिलेवार नम्बर सहितको बिजक दिनु पर्नेछ ।

(२) बिजकको ढाँचा तोकिएबमोजिम हुनेछ ।

(३) बिजक लिनु प्रापकको कर्तव्य हुनेछ ।

[३१](४) दश हजार रुपैयाँभन्दा बढीको कर लाग्ने वस्तु विभागले तोकेको क्षेत्र वाहिर ढुवानी गर्नेले कर बिजक साथमा राख्नु पर्नेछ ।

[३२](५) विभागले करदातालाई क्यास मेसिन वा कम्प्युटरको प्रयोग गरी बिजक दिनु पर्ने गरी आदेश दिन सक्नेछ । यसरी क्यास मेसिन वा कम्प्युटरको प्रयोग गरी बिजक दिने सम्बन्धी अन्य प्रक्रिया विभागले तोके बमोजिम हुनेछ ।

[३३](६) विभागले सूचना प्रकाशन गरी वा लिखित आदेश दिई तोकेको कुनै व्यक्तिले कुनै वस्तुको सोही सूचना वा आदेशमा तोकेको वस्तुको तोकेको समयावधिका लागि त्यस्तो वस्तुको खुद्रा बिक्री मूल्य सार्वजनिक गर्नु पर्ने गरी तोक्न सक्नेछ । यस्तो सूचना वा आदेश प्राप्त भए पछि खुद्रा बिक्री मूल्य सार्वजनिक नगरी कुनै वस्तुको बिक्री वा हस्तान्तरण गर्न पाउने छैन ।

[३४](७) उपदफा (६) बमोजिम तोकिएको व्यक्तिले त्यस्तो वस्तुको दर्ता नभएको व्यक्तिलाई बिक्री गर्दा सार्वजनिक भएको मूल्यमा तोकिएको ढाँचामा बिजक दिई उपभोक्ता तहको कर समेत असुल उपर गराउने व्यवस्था गरिनेछ ।

---

३० आर्थिक ऐन, २०६७ द्वारा थप ।
३१ आर्थिक ऐन, २०६७ द्वारा थप ।
३२ आर्थिक ऐन, २०६७ द्वारा थप ।
३३ आर्थिक ऐन, २०६७ द्वारा थप ।
३४ आर्थिक ऐन, २०६७ द्वारा थप ।

तर उपदफा (६) बमोजिम नतोकिएको कुनै व्यक्तिले स्वेच्छाले यस उपदफा बमोजिमको बिजक दिन सक्नेछ ।

**१५. <u>दर्ता नभएको व्यक्तिले कर उठाउन नहुने</u>** : (१) दर्ता नभएको व्यक्तिले कर असुल गरेको देखिने कुनै बिजक वा कागजात जारी गर्न र कर उठाउन हुँदैन ।

(२) दर्ता नभएको कुनै व्यक्तिले कर उठाएमा त्यसरी उठाएको कर निर्धारण गरी निजबाट असुल उपर गरिनेछ ।

[३५](३) उपदफा (१) र (२) मा जुनसुकै कुरा लेखिएको भएतापनि स्थानीय निकाय वा नेपाल स्थित अन्तर्राष्ट्रिय संघ संस्था वा नियोग वा नेपाल सरकार वा मूल्य अभिवृद्धि कर नलाग्ने वस्तुको कारोवार गर्ने सार्वजनिक संस्थानहरूले मूल्य अभिवृद्धि कर लाग्ने वस्तु वा सेवा बिक्री गर्दा कर असुल उपर गर्नु  पर्नेछ ।

**१६. <u>कारोबारको लेखा राख्नु पर्ने</u>**: (१) करदाताले दफा १८ बमोजिमको कर अवधिको आफ्नो कारोबारको लेखा अद्यावधिक राख्नु पर्नेछ र त्यस्तो लेखा निरीक्षण गर्न कर अधिकृतले माग गरेमा जहाँसुकै रहेको निजको त्यस्तो लेखा कर अधिकृतलाई उपलब्ध गराउनु पर्नेछ ।

[३६](१क) विभागले करदाताको कम्प्युटर तथ्यांक आधार (डाटावेश) मा निरन्तर पहुँच प्राप्त गर्न सक्नेछ ।

(२) करदाताले राखेको लेखामा देहायका कुराहरू समेत समावेश हुनु पर्नेछ :-

(क) कारोबार भएको मिति,

(ख) प्रत्येक कारोबारको मूल्य,

(ग) कारोबारको अर्को पक्ष दर्ता भएको रहेछ भने निजको दर्ता नम्बर र

(घ) कारोबारसँग सम्बद्ध तोकिएबमोजिमका अन्य कुराहरू ।

(३) दर्ता भएको व्यक्तिले सम्बन्धित कर अधिकृतद्वारा प्रमाणित भएको खरिद तथा बिक्री खाता लेखा राख्ने प्रयोजनको निमित्त प्रयोग गर्नु पर्नेछ ।

---

३५ आर्थिक ऐन, २०६७ द्वारा थप ।

३६ आर्थिक ऐन, २०६७ द्वारा थप ।

[३७](३क) कर लाग्ने वस्तु वा सेवाको कारोबार गर्ने दर्ता नभएका व्यक्तिले प्रत्येक आर्थिक वर्षको लागि खरिद बिक्री खाता आफैंले प्रमाणित गराई राख्नु पर्नेछ । त्यस्तो खाता कर अधिकृतले जुनसुकै बखत जाँच गर्न सक्नेछ ।

(४) करदाताले कारोबारको लेखा तोकिएको अवधिसम्म सुरक्षित राख्नु पर्नेछ ।

[३८](५) यो ऐन वा यस ऐन अन्तर्गत बनेका नियमले तोकेको प्रक्रिया पूरा गरी करदाताले राखेको लेखालाई अन्यथा प्रमाणित नभएसम्म मान्यता दिईनेछ ।

[३९]**१६क. कम्प्यूटर प्रशोधित अभिलेख प्रमाणको रूपमा ग्राह्य हुने**: (१) प्रचलित कानूनमा जुनसुकै कुरा लेखिएको भए तापनि करको प्रयोजनको निमित्त अन्यथा प्रमाणित भएमा बाहेक विभाग वा अन्तर्गतका कार्यालयमा रहेका कम्प्यूटरबाट प्रशोधित करदाता सम्बन्धी अभिलेख प्रमाणको रूपमा ग्राह्य हुनेछ ।

(२) विभागले सूचना प्रकाशन गरी विद्युतीय माध्यमबाट बिजक जारी गर्ने, लेखा राख्ने, कर विवरण पेश गर्ने तथा भुक्तानी गर्ने सम्बन्धमा आवश्यक व्यवस्था गर्न सक्नेछ ।

[४०]**१६ख. नोक्सान भएको वस्तुमा तिरेको कर कट्टी गर्ने**: आगजनी, चोरी, दुर्घटना, टुटफुट वा ध्वंशात्मक गतिविधिको कारणले हानी नोक्सानी भएको वस्तुमा तिरेको मूल्य अभिवृद्धि कर तोकिए बमोजिम कट्टी गर्न पाईनेछ ।

**१७. कर कट्टी**: (१) दर्ता भएको व्यक्तिले आफ्नो कर लाग्ने कारोबारसँग सम्बन्धित वस्तु वा सेवा आयात वा प्राप्त गर्दा तिरेको वा तिर्नुपर्ने करको रकम आफूले उठाएको करको रकमबाट कट्टी गर्न सक्नेछ ।

[४१](२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भएतापनि व्यावसायिक वा व्यक्तिगत दुवै प्रयोजनको लागि प्रयोग हुन सक्ने तोकिएका वस्तुहरूका हकमा करकट्टी गर्न नपाउने वा आंशिक रूपमा मात्र कर कट्टी गर्न पाउने व्यवस्था गर्न सकिनेछ :-

(क) हवाइजहाज,

---

३७ आर्थिक ऐन, २०६७ द्वारा थप ।
३८ पहिलो संशोधनद्वारा थप ।
३९ आर्थिक ऐन, २०६७ द्वारा थप ।
४० आर्थिक ऐन, २०६७ द्वारा थप ।
४१ आर्थिक ऐन, २०६७ द्वारा संशोधित ।

(ख) मोटर,

(ग) [४२]............

(घ) धेरै मूल्य पर्ने तोकिएबमोजिमका अन्य वस्तुहरू ।

(३) कुनै महिनामा कारोबार भएको वस्तु वा सेवाको पूर्ण अंश कर लाग्ने कारोबारमा प्रयोग नभएमा उक्त वस्तु वा सेवामा पहिले तिरेको कर कट्टी सो वस्तु वा सेवाको कर लाग्ने कारोबारमा प्रयोग भएको अंशमा मात्र तोकिएबमोजिम प्रदान गरिनेछ ।

(४) यस दफाबमोजिम कर कट्टी सुविधा प्रदान गरिने वस्तु वा सेवाको तोकिएबमोजिमको उपयोगिताको अवधि समाप्त हुनुभन्दा अगावै कर लाग्ने कारोबारमा प्रयोग हुन छाडेमा तोकिएबमोजिम सो वस्तु वा सेवा तत्काल बजार मूल्यमा बिक्री भएको मानी कर असुल उपर गरिनेछ ।

(५) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि प्रयोग भैसकेका वस्तुहरूको कारोबार गर्ने दर्ता भएको व्यक्तिले पाउने कर कट्टी सुविधा तोकिएबमोजिम हुनेछ ।

[४३](५क) उपदफा (२) को अधीनमा रही वित्तीय पट्टा अन्तर्गत ऋण सम्झौता गरी पैठारी वा खरीद गरिएका पूँजीगत वस्तुहरूमा तिरेको कर सम्बन्धित करदाताले कट्टी गर्न पाउनेछ ।

[४४](५ख) दफा ८ को उपदफा (२), दफा १२क. र दफा १५ को उपदफा (३) बमोजिम तिरेको कर सम्बन्धित करदातालाई कट्टी गर्न दिइनेछ ।

(६) यस ऐनबमोजिमको कर कट्टी सुविधा तोकिएबमोजिमका कागजातहरूद्वारा दाबी प्रमाणित भएपछि मात्र दिइनेछ ।

(७) दर्ता हुँदाका बखत मौज्दातमा रहेको करलाग्ने कारोबारमा प्रयोग हुने वस्तुमा तिरेको वा तिर्नु पर्ने कर कट्टी गर्ने व्यवस्था तोकिएबमोजिम हुनेछ ।

[४५](८) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि लगातार छ महिनासम्म कर विवरण पेश नगर्ने करदाताको नाम सार्वजनिक गरिनेछ र त्यस्ता

---

४२ पहिलो संशोधनद्वारा झिकिएको ।

४३ आर्थिक ऐन, २०६७ द्वारा संशोधित ।

४४ आर्थिक ऐन, २०६७ द्वारा थप ।

४५ आर्थिक ऐन, २०६७ द्वारा थप ।

करदाताको करकट्टी गर्नु पर्ने रकम बाँकी भए निलम्वन गर्न र निजको दर्ता समेत निलम्वन गर्न सकिनेछ ।

**१८. कर विवरण पेश गर्नु पर्ने** : (१) करदाताले प्रत्येक महिना आफूले बुझाउनु पर्ने कर रकम स्वयं निर्धारण गरी सो महिना समाप्त भएको पच्चीस दिनभित्र कर अधिकृत समक्ष [४६]वा हुलाकबाट रजिष्ट्री गरी तोकिएबमोजिम कर विवरण पेश गर्नु पर्नेछ । यस्तो विवरण सो महिनामा कर लाग्ने कारोबार गरेको वा नगरेको जेसुकै भए तापनि पेश गर्नु पर्नेछ ।

"(१क) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि आन्तरिक राजस्व कार्यालय नभएका जिल्लाका करदाताले आफूले कर विवरण बुझाउनु पर्ने महिनाको पन्ध्र गतेभित्र सोही जिल्लाको कोष तथा लेखा नियन्त्रक कार्यालयमा बुझाउनु पर्ने कर रकम र कर विवरण पेश गर्न सक्नेछ । यसरी प्राप्त हुन आएको कर विवरण तथा कर भुक्तानीको विवरण कोष तथा लेखा नियन्त्रक कार्यालयले सात दिनभित्र सम्बन्धित आन्तरिक राजस्व कार्यालयमा पठाउनु पर्नेछ ।

[४७](१ख) उपदफा (१) बमोजिम विवरण पेश गर्ने र पठाउने कार्यविधि विभागले निर्धारण गर्न सक्नेछ ।"

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि तोकिएबमोजिमका करदाताले एक महिनाभन्दा कम वा बढी अवधिको कर विवरण पेश गर्न सक्नेछ ।

**१९. करको भुक्तानी** : (१) करदाताले [४८]प्रत्येक कर अवधिको कर सो अवधि समाप्त भएको मितिले पच्चीस दिनभित्र बुझाउनु पर्नेछ ।

[४९](२) करदाताले उपदफा (१) मा उल्लिखित म्यादभित्र बुझाउनु पर्ने कर नबुझाएमा बाँकी रहेको कर रकममा वार्षिक दश प्रतिशतका दरले थप दस्तुर लाग्नेछ ।"

(३) [५०].............

(४) करदाताले आफ्नो काबूबाहिरको परिस्थितिले गर्दा म्यादभित्र करको रकम

---

४६ आर्थिक ऐन, २०६७ द्वारा थप ।
४७ आर्थिक ऐन, २०६७ द्वारा थप ।
४८ पहिलो संशोधनद्वारा संशोधित ।
४९ आर्थिक ऐन, २०६७ द्वारासंशोधित ।
५० आर्थिक ऐन, २०६७ द्वारा झिकिएको ।

बुझाउन नसकेको कारण देखाई [५१]उपदफा (२) बमोजिम लाग्ने थप दस्तुरहरू मिनाहा पाउन निवेदन गरेमा र कारण मनासिब देखेमा महानिर्देशकले त्यस्तो दस्तुर मिनाहा दिन सक्नेछ ।

(५) [५२]उपदफा (२) बमोजिमको थप दस्तुरहरू र दफा २६ बमोजिमको व्याज हिसाब गर्दा बुझाउनु पर्ने कर रकमको दायित्व जुन महिनाको कारोबारबाट सिर्जना भएको हो सोही महिनाको कर बुझाउनु पर्ने म्याद गुज्रेको मितिदेखि नै गणना गरिनेछ ।

[५३](६) दफा २० बमोजिम करदाताको कर निर्धारण गर्दा सो कर अवधिमा निजसँग असुल गर्नु पर्ने करभन्दा निजले फिर्ता पाउन सक्ने कर बढी भएको पाईएमा निजको सो कर अवधिमा कर निर्धारण गर्दा थप दस्तुर र व्याज असुल गरिने छैन ।

[५४](७) उपदफा (१) मा उल्लिखित म्यादभित्र करको भुक्तानी बैंकले प्रत्याभूति दिएको चेक (गुड फर पेमेन्ट चेक) बाट समेत गर्न सकिनेछ । यसरी बैंकले प्रत्याभूति दिएको चेक (गुड फर पेमेन्ट चेक) कार्यालयले बुझेको मितिदेखि नै करको भुक्तानी भएको मानिनेछ ।

[५५](८) ब्याज, थप दस्तुर र जरिबाना माथि ब्याज असुल गरिने छैन ।

२०. **कर अधिकृतले कर निर्धारण गर्न सक्ने** : (१) देहायका कुनै अवस्थामा कर अधिकृतले कर निर्धारण गर्न सक्नेछ :-

(क) म्यादभित्र कर विवरण पेश नगरेमा,

(ख) अधुरो वा त्रुटीपूर्ण कर विवरण पेश गरेमा,

(ग) झुट्टा कर विवरण पेश गरेमा,

(घ) करको रकम कम देखाएको वा ठीक नभएको भन्ने कर अधिकृतलाई विश्वास गर्नु पर्ने कारण भएमा ।

[५६](ङ) आपूर्ति मूल्यमा न्यून बिजकीकरण गरेको भन्ने कर अधिकृतलाई विश्वास गर्नु पर्ने कारण भएमा ।

---

५१ आर्थिक ऐन, २०६७ द्वारा संशोधित ।
५२ आर्थिक ऐन, २०६७ द्वारा संशोधित ।
५३ पहिलो संशोधनद्वारा थप ।
५४ पहिलो संशोधनद्वारा थप ।
५५ पहिलो संशोधनद्वारा थप ।
५६ पहिलो संशोधनद्वारा थप ।

[५७](च) न्यून बिजकीकरण गरी समूह कम्पनीमा आपूर्ति भएमा,

[५८](छ) दर्ता हुनु पर्ने दायित्व भएको व्यक्तिले दर्ता नगरी कारोबार गरेमा,

[५९](ज) बिजक जारी नगरी बिक्री गरेमा,

[६०](झ) दर्ता नभएको व्यक्तिले कर उठाएमा ।

(२) उपदफा (१) बमोजिम कर निर्धारण गर्दा देहायका कुनै वा सबै आधारमा करको निर्धारण गर्न सकिनेछ :-

(क) कारोबारको सबुद,

(ख) कारोबारको सम्बन्धमा सम्बन्धित कर अधिकृतले पेश गरेको कर परीक्षण प्रतिवेदन,

(ग) समान प्रकृतिको कारोबारमा संलग्न अन्य व्यक्तिले बुझाएको कर ।

(३) उपदफा (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि उपरोक्तबमोजिम करको निर्धारण गर्दा प्रमाणको भार पुऱ्याउने अभिभारा सम्बन्धित कर अधिकृतको हुनेछ ।

[६१](४) उपदफा (१) बमोजिम कर निर्धारण गर्दा कर विवरण पेश गरेको मितिले चार वर्षभित्र कर निर्धारण गरिसक्नु पर्नेछ। सो अवधिभित्र कर निर्धारण हुन नसकेमा पेश भएको विवरण नै स्वतः मान्य भएको मानिनेछ।"

[६२](४क) उपदफा (४) मा जुनसुकै कुरा लेखिएको भए तापनि कुनै व्यक्तिले झुट्टा लेखा वा बिजक वा अन्य कागजात तयार गरी वा जालसाजी गरी कर छलेको रहेछ भने जुनसुकै वखत विभागले पुनः कर निर्धारण गर्न आदेश दिन सक्नेछ।

(५) यस दफाबमोजिम कर निर्धारण गर्दा कर अधिकृतले सम्बन्धित व्यक्तिलाई

---

५७ आर्थिक ऐन, २०६७ द्वारा थप ।

५८ आर्थिक ऐन, २०६७ द्वारा थप ।

५९ आर्थिक ऐन, २०६७ द्वारा थप ।

६० आर्थिक ऐन, २०६७ द्वारा थप ।

६१ आर्थिक ऐन, २०६७ द्वारा थप ।

६२ आर्थिक ऐन, २०६७ द्वारा संशोधित ।

आफ्नो सफाइ पेश गर्न [६३]पन्ध्र दिनको म्याद दिनु पर्नेछ ।

२१. **करको असुली** : (१) यस ऐनबमोजिमको म्यादभित्र बुझाउनु पर्ने कर कुनै करदाताले नबुझाएमा महानिर्देशकको पूर्व स्वीकृति लिई सम्बन्धित कर अधिकृतले देहायका कुनै वा सबै तरिका अपनाई कर असुल गर्न सक्नेछ :-

(क) करदातालाई फिर्ता गर्नु पर्ने रकम भए त्यसमा कट्टा गरेर ।

(ख) करदाताको चल तथा अचल सम्पत्ति कब्जा गरेर ।

[६४](ग) करदाताको सम्पूर्ण वा केही सम्पत्ति एकै पटक वा पटक पटक गरी सिलबन्दी बोलपत्र वा सार्वजनिक बढाबढद्वारा लिलाम बिक्री गरेर ।

(घ) बैंक तथा अन्य वित्तीय संस्थामा रहेको करदाताको रकमबाट कट्टा गर्न लगाएर ।

(ङ) नेपाल सरकार वा नेपाल सरकार को स्वामित्वमा भएको कुनै सङ्गठित संस्था वा स्थानीय निकायहरूबाट करदाताले पाउने रकमबाट कट्टा गर्न लगाएर ।

(च) कुनै तेस्रो व्यक्तिले करदातालाई तिर्नुपर्ने रकम करदाताको पूर्व सहमति लिई कट्टा गरेर ।

(छ) करदाताको आयात निर्यात र अन्य कारोबार रोक्का गरेर ।

(२) ..............[६५]

[६६](३) कर असुली वा फिर्ता गर्दा एक रुपैयाँभन्दा घटी भएको रकमलाई हिसाबमा गणना गरिने छैन ।

२२. **शङ्कास्पद अवस्थामा कर निर्धारण**: यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि कुनै करदाताले नेपालछोडी जाने वा आफ्नो सम्पत्ति अरू कसैलाई हस्तान्तरण गर्ने, हटाउने वा लुकाउने सम्भावना भई कर असुली हुन नसक्ने अवस्था छ भन्ने

---

६३ आर्थिक ऐन, २०६७ द्वारा थप ।

६४ आर्थिक ऐन, २०६७ द्वारा संशोधित ।

६५ आर्थिक ऐन, २०६७ द्वारा झिकिएको ।

६६ पहिलो संशोधनद्वारा थप ।

विश्वास गर्ने आधार भएमा कर अधिकृतले महानिर्देशकको स्वीकृति लिई लाग्ने तथा लागेको कर तुरुन्त निर्धारण गर्न र असुल गर्न सक्नेछ।

२२क. **कर छल्ने योजना विरुद्धको व्यवस्था** : यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भएतापनि करको फाइदा लिने बदनियतले देहायको कुनै कार्य गरेमा करमुक्ति योजना गरी कर छल्ने दुरुत्साहन गरेको मानी महानिर्देशकले त्यस्तो करदाताको कर निर्धारण गरी कर असुल उपर गर्ने आदेश कर अधिकृतलाई दिन सक्नेछः-

(क) यस ऐनमा भएको व्यवस्थाको दुरूपयोग गरी कर छल्ने बदनियत्ले कुनै योजना तथा कार्य गरी करको दायित्व कम गरेमा,

(ख) कुनै व्यक्ति वा निकायले करको दायित्व कम गर्ने बदनियत्ले कुनै कार्य गरेमा वा सो गर्ने उद्देश्यले सम्झौता गरेमा।

२३. **जाँच तथा परीक्षणसम्बन्धी अधिकार**: (१) यस ऐनबमोजिम दर्ता गर्नु पर्ने करदाताले दर्ता नगरी कर लाग्ने कारोबार गरेको छ भन्ने कुरामा विश्वास गर्नु पर्ने मनासिब आधार भएमा कर अधिकृतले जाँचबुझ गर्न सक्नेछ।

(२) उपदफा (१) बमोजिम जाँचबुझ गर्ने, दर्ता भएको व्यक्तिले दफा १८ बमोजिम पेश गरेको कर विवरण जाँच गर्ने र दफा २० बमोजिम कर निर्धारण गर्ने प्रयोजनका लागि कर अधिकृतलाई देहायबमोजिमको अधिकार हुनेछ :-

(क) कर दायित्वसँग सम्बन्धित वस्तुहरू, स्थान, कागजात, लेखा तथा अभिलेख जाँच गर्ने,

(ख) करदाताको कारोबार स्थल वा यस ऐन अन्तर्गत कसूर मानिने कार्यसित सम्बन्धित प्रमाणहरू हुनसक्ने सम्भावना भएका अन्य स्थलहरूमा खानतलासी लिने,

(ग) आफ्नो कर्तव्यपालनको सिलसिलामा कुनै अभिलेख, किताब, खाता, कागजातहरू तयार गर्ने वा तिनीहरूमा विवरण भर्ने व्यक्तिसँग जानकारी माग गर्ने,

(घ) करदाताको कारोबारस्थल वा सोसँग सम्बन्धित अन्य स्थलमा रहेको कुनै कागजात, किताब तथा अभिलेखलाई हटाउने वा कब्जा गर्ने वा अन्यत्र लैजाने,

(ङ) करदाताको कारोबार सञ्चालन गर्ने स्थान वा कर कार्यालय वा अन्य कुनै उपयुक्त स्थानमा करको लेखापरीक्षण गर्ने ।

(३) कर अधिकृतले बैंक तथा वित्तीय संस्था लगायत कुनै व्यक्तिसँग कुनै करदाताको कारोबारको सम्बन्धमा कुनै कुराको जानकारी माग गरेमा त्यस्तो सूचना कर अधिकृतलाई दिनु त्यस्तो व्यक्तिको कर्तव्य हुनेछ ।

[६७]**२३क. स्थानीय प्रशासन तथा प्रहरीले सहयोग गर्नुपर्ने** : यो ऐन कार्यान्वयन गर्ने सिलसिलामा कर अधिकृतले स्थानीय प्रशासन तथा प्रहरीको सहयोग मागेमा त्यस्तो सहयोग गर्नु स्थानीय प्रशासन तथा प्रहरीको कर्तव्य हुनेछ ।

[६८]**२३ख. करसम्बन्धी व्यवस्था यसै ऐनबमोजिम हुने** : प्रचलित कानूनमा जुनसुकै कुरा लेखिएको भए तापनि सालबसाली लागू हुने आर्थिक ऐनले यस ऐनमा संशोधन गरी कर लगाउने, निर्धारण गर्ने, बढाउने, घटाउने, छुट दिने वा मिनाहा दिनेसम्बन्धी व्यवस्था गरेकोमा बाहेक अन्य कुनै पनि ऐनले यस ऐनबमोजिमका करका व्यवस्थाहरूमा कुनै पनि संशोधन, परिवर्तन वा करसम्बन्धी अन्य व्यवस्थाहरू गर्न सक्ने छैन ।

[६९]**२३ग. न्यून बिजकीकरणका वस्तु खरिद गर्ने** : (१) कुनै व्यक्तिले प्रचलित बजार मूल्य भन्दा बिक्री मूल्य कम देखाई न्यून बिजकीकरण गरी कुनै वस्तु बिक्री गरेमा प्रचलित कानूनमा जुनसुकै कुरा लेखिएको भए तापनि त्यसरी न्यून बिजकीकरण गरी बिक्री गरेको त्यस्तै प्रकृतिको मौज्दातमा बाँकी रहेको वस्तु कर अधिकृतले रोक्का राखी न्यून बिजकीकरण गरी बिक्री गरेको मूल्यमा विभाग वा आन्तरिक राजस्व कार्यालयले खरिद गर्न वा गराउन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम विभाग वा कार्यालयले वस्तु खरिद गर्दा वा गराउँदा त्यस्तो व्यक्तिले वस्तु बिक्री गर्न मञ्जुर नगरेमा विभाग वा कार्यालयले त्यस्तो वस्तु आफ्नो कब्जामा लिई न्यून बिजकीकरण गरी बिक्री गरेको मूल्यको आधारमा गणना गरी त्यस्तो व्यक्तिले भुक्तानी लिन आएको बखत भुक्तानी दिनु पर्नेछ ।

(३) उपदफा (१) र (२) बमोजिम खरिद गरेको वा खरिद गर्न लगाएको वस्तु महानिर्देशकले तोकेको मूल्य तथा प्रक्रिया अनुसार बिक्री गर्न वा गराउन सकिनेछ ।"

---

६७ पहिलो संशोधनद्वारा थप ।

६८ पहिलो संशोधनद्वारा थप ।

६९ आर्थिक ऐन, २०६७ द्वारा थप ।

